


ཀྭེར་ཡུཐ་གྲུབ क्वयेर युथ ग्रुप

क्वयेर युथ ग्रुप

**Queer Youth Group**

सन् २०१८ मा फुक्का संज़ालको रुपले सुरु भएको सन् २०२० मा मुनाफा वितरण नगर्ने संस्थाका रूपमा दर्ता भएको हामी सिमान्तकृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषताका व्यक्ति (क्वयेर व्यक्ति)हरूद्वारा नेतृत्व गरिएको र क्वयेर अधिकारमा कार्यरत छौँ।

दर्ता नं : २४४९३५/०७७/०७८

स्था.ले.नं : ६०९८२६५८२


---

नेपाल संवत् ११४१ दिल्ला २७

२०७८ असार ३०




श्री प्रधानमन्त्री तथा मन्त्रीपरिषद्को कार्यालय,
सिंहदरबार, यें (काठमाडौं)।

**विषय : लैङ्गिक र भाषिक सरोकारको विषय मन्त्रीपरिषद्मा उठाई माग बमोजिम निर्णय गरिपाउँ।**

जुलाई १४ तारिखमा वर्षेनी मनाइने आज गैर-द्वयसांखिक व्यक्तिहरूको अन्तर्राष्ट्रिय दिवस (International Non-Binary People's Day) को उपलक्षमा हामी यस संस्थाले महिला र पुरुष बाहेकका लैङ्गिक पहिचानहरूलाई अङ्ग्रेजी भाषामा गरिने सम्बोधन तथा लैङ्गिक तटस्थ भाषा सम्बन्धी ध्यानाकर्षण गराउँदै केही मागहरू अघि सारेका छौं।

नेपालमा अङ्ग्रेजी भाषा औपचारिक कामकाजको भाषा नभएतापनि निजी क्षेत्रका साथै विद्यालय देखि विश्वविद्यालय तहको शैक्षिक प्रमाणपत्रहरू जस्ता महत्वपूर्ण व्यक्तिगत कागजप्रमाण तथा अन्तर्राष्ट्रिय एवं बहुराष्ट्रिय पत्राचारमा प्रयोग हुने एवं नेपालका ऐन कानून समेत अङ्ग्रेजीमा अनुवाद हुने भएकाले महिला र पुरुष बाहेकका लैङ्गिक पहिचानहरूको समेत समावेशिता सुनिश्चित हुने र लैङ्गिक तटस्थ भाषिक अभ्यासहरूका सवालमा हामी सम्बन्धित निकायहरूमा देहायको माग गर्दछौं।

१) व्यक्तिवाचक सर्वनाम तृतीय व्यक्ति एकवचन सर्वनामहरू लैङ्गिकताबोधक रहेका छन्। पुरुषबोधक सर्वनाम He र महिलाबोधक सर्वनाम She को प्रयोग गरिएको पाइन्छ। तसर्थ विश्वमा अनुशरण हुँदै आएको अभ्यास बमोजिम They सर्वनामलाई लैङ्गिक तटस्थ तृतीय व्यक्ति एकवचनका रूपमा मान्यता दिन हाम्रो माग रहेको छ। सबै व्यक्तिहरूलाई सम्बोधन गर्नुपर्दा वा लैङ्गिक तटस्थ ढङ्गले सम्बोधन गर्नुपर्ने अवस्थामा he/she (पुरुष र महिला जनाउने) भनि उल्लेख गर्ने प्रचलनलाई तिलाञ्जली दिएर लैङ्गिक तटस्थ सर्वनाम they को प्रयोग गरिनुपर्छ।

२) अङ्ग्रेजी भाषामा व्यक्तिको नाम अगाडीको सम्बोधन Mr. (पुलिङ्गी) र Ms. (स्त्रीलिङ्गी) भनि गरिने गरिन्छ। महिलाहरूलाई विशेष वैवाहित स्थितिको आधारमा Miss र Mrs. भन्ने अभ्यास महिलाद्वेषी र लैङ्गिक असमानतामूलक अभ्यास क्रमशः प्रतिस्थापन हुँदै वैवाहित स्थितिसँग असम्बन्धित महिलाहरूलाई Ms. (उच्चारण : मिज् /mɪz/) भनि

---


ईमेल: queeryouthgroup.nepal@gmail.com
सम्पर्क नं : +९७७-९८०८२६२६९९
ठेगाना : लपुमनपा-१६, ललितपुर, प्रदेश ३

http://fb.com/QYGnepal/
qygnepal
QueerYouthGroup




क्वयेर युथ ग्रुप
Queer Youth Group


दर्ता नं : २४४९३५/०७७/०७८
स्था.ले.नं : ६०९८२६५८२

सन् २०१८ मा फुक्का संजालको रुपले सुरु भएको सन् २०२० मा मुनाफा वितरण नगर्ने संस्थाका रूपमा दर्ता भएको हामी सिमान्तकृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषताका व्यक्ति (क्वयेर व्यक्ति)हरुद्वारा नेतृत्व गरिएको र क्वयेर अधिकारमा कार्यरत छौँ।

सम्बोधन गर्ने गरिएको छ । महिलाहरूलाई पनि वैवाहिक स्थिति तटस्थ सम्बोधन Ms. ले आधिकारिक मान्यता पाउनुपर्छ भन्ने हाम्रो माग रहेको छ । त्यसै गरी महिला र पुरुष बाहेकका लैङ्गिक पहिचान भएका व्यक्तिहरूलाई Mx. (उच्चारण : मुक्स् /muks/ ) भन्ने सम्बोधनलाई मान्यता दिन हाम्रो माग रहेको छ ।

३) पुलिङ्गी शब्दावलीहरूकै सर्वसम्बोधन प्रयोग अर्थात् कुनै व्यक्तिको लैङ्गिकता थहा नहुँदा पनि पुलिङ्गी शब्दावलीलाई default मानेर प्रयोग गर्ने वा भाषाको default gender नै पुलिङ्गी मान्ने अभ्यास पितृसत्तात्मक संरचनाको भाषिक विम्ब हो र पुरुष बाहेक अरु लैङ्गिक पहिचानका व्यक्तिहरू प्रति विभेदकारी र असमावेशी हुन्छ । त्यसै गरि द्वयसांखिक (binary) सर्वसम्बोधन अर्थात् सबै व्यक्तिहरूलाई सम्बोधन गर्दा mam/sir, he/she, chairman/chairwoman, जस्ता सम्बोधन एवं द्वयसांखिक सम्बोधनमा मात्र सीमित भाषाको प्रयोग महिला र पुरुष बाहेकका लैङ्गिक पहिचानका व्यक्तिहरूलाई असमावेशी र विभेदकारी हुन्छ । तसर्थ सबै व्यक्तिहरूलाई सम्बोधन गर्नुपर्ने खण्डमा जुनसुकै शब्दावली पनि लैङ्गिक तटस्थ ढङ्गले सम्बोधन गर्नुपर्छ भन्ने हाम्रो माग रहेको छ ।

नीतिगत तवरबाट नै यी मागहरूको सम्बोधन गरि अङ्ग्रेजी भाषाको प्रयोग हुने सन्दर्भमा यसको अवलम्बन अभ्यास गर्न गराउन एवं अङ्ग्रेजी भाषाको पाठ्यक्रम तथा पाठ्यसामाग्रीहरूमा समेत समावेश गर्न हामी निवेदनार्थः छौं ।

**पत्र साथ संलग्न :-** अवधारणा पत्र - पत्र संख्या ७

**बोधार्थ तथा निवेदनार्थ**

देहायका निकायहरूले पनि उल्लेखित माग सम्बोधन सम्बन्धी आफ्नो अख्तियारी अन्तर्गत जे गर्न सकिन्छ गरिपाउँ ।

- श्री शिक्षा मन्त्रालय, सिंहदरबार, यें (काठमाडौं) ।
- भाषा आयोग, यन्ताबुँ, शंखमूल, यें (काठमाडौं) ।
- श्री परराष्ट्र मन्त्रालय, सिंहदरबार, यें (काठमाडौं) ।
- श्री नेपाल नोटरी पब्लिक परिषद्, कोपुण्डोल, यल (ललितपुर) ।
- Central Department of English, त्रिभुवन विश्वविद्यालय, किपू (कीर्तिपुर) ।

सुरक्षा जोशी
कार्यसमिति सदस्य

ईमेल: queeryouthgroup.nepal@gmail.com
सम्पर्क नं : +९७७-९८०८२६२६९९
ठेगाना : लपुमनपा-१६, ललितपुर, प्रदेश ३
http://fb.com/QYGnepal/
qygnepal
QueerYouthGroup

# अवधारणा पत्र

लैङ्गिक पहिचान सम्बन्धी कुनै अवधारणागत र शाब्दिक जिज्ञासा परेमा यस पुस्तकलाई रीफर गर्नुहोला । https://nepalcfc.org/wp-content/uploads/Basic_SOGIESC_Nepali.pdf

फैसला मिति : २०६४/०९/०६ , निर्णय नं.७९५८, ने.का.प. २०६५,अङ्क ४ रहेको सुनिलबाबु पन्त वि. नेपाल सरकारको रीट निवेदनमा भएको फैसला पछि महिला र पुरुष बाहेकका लैङ्गिकताले कानूनी मान्यता प्राप्त गरेको सर्वाविद नै छ । नेपालको संविधान २०७२ ले कसैलाई पनि कुनै आधारमा विभेद नगरिने भनि समानताको हक सुनिश्चित गरेको छ । महिला र पुरुष बाहेक विभिन्न लैङ्गिक पहिचान भएका व्यक्तिहरू आफ्नो हक अधिकारको लागि अझै संघर्षतः छन् । समावेशिता र समानताको सवालमा भाषा र भाषाको प्रयोग निकै नै महत्वपूर्ण विषय हो ।

त्यसैले आज *गैर-द्वयसांखिक व्यक्तिहरूको अन्तर्राष्ट्रिय दिवस (International Non-Binary People's Day)* को उपलक्षमा हामीले अङ्ग्रेजी भाषा सम्बन्धीका विषयवस्तु उठान गरि समावेशी र समानतामूलक भाषा प्रयोगलाई अघि सार्दैछौं । *गैर-द्वयसांखिक (Non-binary)* भन्नाले महिला र पुरुष बाहेकका लैङ्गिक पहिचानहरूलाई सम्बोधन गर्ने छाता शब्द हो ।

## They सर्वनामलाई एकवचन लैङ्गिक तटस्थ सर्वनामका रूपमा प्रयोग

अङ्ग्रेजी भाषामा एकवचन तृतीय व्यक्ति सर्वनाम पुलिङ्गी 'he' र स्त्रीलिङ्गी 'she' भनि प्रयोग गर्ने गरिन्छ । यसका कारण लैङ्गिक तटस्थ सम्बोधन र महिला पुरुष बाहेका व्यक्तिहरूलाई सही ढङ्गले सम्बोधन हुन सकेको छैन । यसको लागि लैङ्गिक तटस्थ सर्वनामका रूपमा 'they' को प्रयोग हुने गरेको छ । गैर-द्वयसांखिक (Non-Binary) लैङ्गिक पहिचानका व्यक्तिहरूले पनि 'they/them' सर्वनामको प्रयोग गर्ने गरेका छन् ।

जस्तै :- *Safal is 22 years old. They study Bachelors in Psychology. They are currently in Kathmandu. Their permanent address is in Humla.*

'They' लाई लैङ्गिक तटस्थ एकवचन सर्वनामका रूपमा प्रयोग गर्ने प्रचलन नयाँ होइन । कुनै व्यक्तिको लैङ्गिकता थहा नहुँदा 'they' सर्वनामको सामान्यतः प्रयोग भइ नै रहेको पाइन्छ ।

- "Somebody left their umbrella in the office. Could you please let them know where they can get it?"
- "The patient should be told at the outset how much they will be required to pay."
- "But a journalist should not be forced to reveal their sources."

Oxford English Dictionary का अनुसार १४ औँ शताब्दीमै singular 'they' को प्रयोग हुन थालिसकेको थियो ।[1] २१ औँ शताब्दीमा महिला र पुरुष बाहेकका लैङ्गिक पहिचान भएका व्यक्तिहरूले पनि यस सर्वनामको प्रयोग गर्ने प्रचलन सुरु भएको हो ।[2] American Dialect Society ले पनि सन् २०१० देखि २०१९ को दशकको शब्द singular 'they' भनि घोषित गरेका छन् ।[3]

अङ्ग्रेजी भाषामा तिमी र तिमीहरू भन्ने एकवचन र बहुवचन दुबै एउटै सर्वनाम You को प्रयोग गरिन्छ । They को पनि एकवचन प्रयोग त्यसरी नै गरिन्छ । Subject-Verb agreement मा Singular 'You' को संगती बहुवचनमा हुने जस्तै Singular 'They' को संगती पनि बहुवचनमा हुन्छ ।

## नव निर्मित सर्वनामहरू (Neo pronouns)

Singular 'they' को प्रयोग व्यापक भएतापनि कतिपय नयाँ सर्वनामहरू पनि प्रचलनमा आएका छन् ।

| | | | | | |
|---|---|---|---|---|---|
| yo | *Yo* is laughing | I called *yo* | *yos* eyes gleam | that is *yos* | yo likes *yoself* |

American Dialect Society अनुसार यो सर्वनाम लैङ्गिक तटस्थ प्रयोजनका लागि सन् २००७ देखि संयुक्त राष्ट्र अमेरिकाको Baltimore मा प्रयोग हुँदै आएको छ ।[4] [5]

---

[1] https://www.oed.com/view/Entry/200700

[2] People have used singular 'they' to describe someone whose gender is unknown for a long time, but the nonbinary use of 'they' is relatively new. https://www.merriam-webster.com/words-at-play/singular-nonbinary-they

[3] https://twitter.com/americandialect/status/1213258883512311813

[4] https://read.dukeupress.edu/american-speech/article-abstract/82/3/262/5458/A-NEW-GENDER-NEUTRAL-PRONOUN-IN-BALTIMORE-MARYLAND

[5] http://itre.cis.upenn.edu/~myl/languagelog/archives/005298.html

| | | | | | |
|---|---|---|---|---|---|
| ey | ey laughed | I kissed em | eir head hurts | that is eirs | ey feeds emself |

LambdaMOO नामक अनलाइन समुदाय मार्फत् एक अमेरिकी गणितविज्ञ Michael Spivak ले यो सर्वनामको प्रचलन सन् १८९० देखि ल्याएका थिए ।[6] [7] [8]

| | | | | | |
|---|---|---|---|---|---|
| Ne | Ne laughed | I called nem | Nir eyes gleam | That is nirs | Ne likes nemself |
| Ve | Ve laughed | I called ver | Vis eyes gleam | That is vis | Ve likes verself |
| Ze (or zie) and zir | Ze laughed | I called zir | Zir eyes gleam | That is zirs | Ze likes zirself |
| Xe | Xe laughed | I called xem | Xyr eyes gleam | That is xyrs | Xe likes xemself |

यी सर्वनामहरू गैर-द्वयसांखिक लैङ्गिक पहिचान भएका व्यक्तिहरूले अघि सारि प्रचलनमा ल्याएका हुन् । Singular 'they' को प्रचलनमा they सर्वनाम लैङ्गिक तटस्थ रूपमा पनि प्रयोग हुन्छ भने गैर-द्वयसांखिक

[6] The Epicene Pronoun: The Word That Failed, https://www.jstor.org/stable/455007?origin=crossref
[7] Marlaine E. Curriculum and Research for Equity: A Training Manual for Promoting Sex Equity in the Classroom, Page 95, https://files.eric.ed.gov/fulltext/ED235104.pdf
[8] MacKay, Donald G. (May 1980), Psychology, Prescriptive Grammar, and the Pronoun Problem, http://mackay.bol.ucla.edu/1980%20pronoun%20problem%20ap%201980.pdf

व्यक्तिहरूलाई सम्बोधन गर्न पनि प्रयोग हुन्छ । यी नव निर्मित सर्वनामहरू प्रयोग गर्ने हेतुआर्थः यी सर्वनामहरूद्वारा गैर-द्वयसांखिक व्यक्तिहरूलाई सम्बोधन गर्ने र they लैङ्गिक तटस्थ सम्बोधन गर्ने भनि छुट्याएको पाइन्छ ।[9]

वैवाहिक स्थिति तटस्थ सम्बोधन

पुरुषहरूलाई जनाउने सम्बोधन Mr. ले कुनै वैवाहिक स्थिति इङ्गित नगर्नु तर महिलाहरूलाई Miss र Mrs. वैवाहिक स्थिति इङ्गित हुने गरि गर्ने सम्बोधन भाषाद्वारा संस्थागत गरिएको लैङ्गिक असमानता र महिलाद्वेषी प्रचलन रहेको भएर वैवाहिक स्थिति तटस्थ सम्बोधन Ms. को प्रयोग भएको पाइन्छ । Oxford English Dictionary का अनुसार Ms. भन्नाले a title that comes before a woman's family name or before her first and family names together, and that can be used when you do not want to state whether she is married or not उल्लेख गरिएको छ । [10]

लैङ्गिक तटस्थ सम्बोधन

अङ्ग्रेजी भाषामा लैङ्गिक तटस्थ सम्बोधन र गैर-द्वयसांखिक व्यक्तिहरूलाई पनि सम्बोधन गर्ने प्रयोजनार्थः Mx. प्रयोग हुन्छ । यसलाई 'मुक्स' भनि उच्चारण गरिन्छ । यो अभ्यास सन् १९७० देखि सुरु भएको पाइन्छ । [11]

सन्दर्भ सामाग्री

हामीले अघि सारेका यी माग एवं अवधारणाहरू अङ्ग्रेजी भाषाको प्रयोग हुने विश्वका कतिपय देशहरूमा आधिकारिक प्रयोग रहेको, आधिकारिक शब्दकोशहरूमा समावेश भएको, गैर-द्वयसांखिक जनसमुदायमा अपनत्व एवं अभ्यास समेत भएको एवं समावेशिता, समानता तथा मानव अधिकारको सिद्धान्त र नेपालको संविधान अनुरूप मान्यता पाउनुपर्ने विषयहरू हुन् ।

भाषाविज्ञान संगठनहरूको अभ्यास

- Linguistic Society of America statement against linguistic misgendering https://www.linguisticsociety.org/content/lsa-statement-against-linguistic-misgendering

[9] https://intercultural.uncg.edu/wp-content/uploads/Neopronouns-Explained-UNCG-Intercultural-Engagement.pdf
[10] https://www.oxfordlearnersdictionaries.com/definition/english/ms_2
[11] Lexcio Powered by Oxford Dictionaries, https://www.lexico.com/definition/mx

- Guidelines for avoiding misgendering in professional communications https://www.linguisticsociety.org/content/guidelines-avoiding-misgendering-professional-communications
- Modern Language Association of America https://style.mla.org/using-singular-they/

आधिकारिक मान्यताका केही उदाहरणहरू

- Brighton and Hove City Council, Sussex, England ले सन् २०१३ मा Mx. लाई आधिकारिक मान्यता दिएको छ । पेज ५८ बुँदा ३५ https://present.brighton-hove.gov.uk/Published/C00000117/M00004140/AI00033915/$20130430113829_003860_0015602_Appendix1Transrecommendationresponses.docxA.ps.pdf
- बेलायतको सबै सेवा सुविधामा Mx. सम्बोधन उपलब्ध, Now pick Mr, Mrs, Miss, Ms . . . or Mx for no specific gender, https://www.thetimes.co.uk/article/now-pick-mr-mrs-miss-ms-or-mx-for-no-specific-gender-t2rb5bh62rs
- NYC Commission on Human Rights Legal Enforcement Guidance on Discrimination on the Basis of Gender Identity or Expression: Local Law No. 3 (2002); N.Y.C. Admin. Code § 8-102

  1. Failing To Use the Name or Pronouns with Which a Person Self-Identifies (Page 4)

  https://www1.nyc.gov/site/cchr/law/legal-guidances-gender-identity-expression.page
- LGBTIQ+ Inclusive Language Guide, State Government of Victoria, https://www.vic.gov.au/inclusive-language-guide
- Legistics Singular "They", Department of Justice, Government of Canada https://www.justice.gc.ca/eng/rp-pr/csj-sjc/legis-redact/legistics/p1p32.html

केही शब्दकोश

- A Gender-Neutral Honorific - Merriam Webster
  https://www.merriam-webster.com/words-at-play/mx-gender-neutral-title
- They - Merriam Webster
  https://www.merriam-webster.com/dictionary/they
- Mx. - Oxford English Dictionary
  https://www.oed.com/view/Entry/37988089
- They - Oxford Learner's Dictionary
  https://www.oxfordlearnersdictionaries.com/definition/american_english/they
- They - Cambridge Dictionary
  https://dictionary.cambridge.org/dictionary/english/they
- Mx. - Cambridge Dictionary
  https://dictionary.cambridge.org/dictionary/english/mx

केही विश्वविद्यालयका अभ्यासहरू

- The University of North Carolina, The Office of Intercultural Engagement,
  https://intercultural.uncg.edu/wp-content/uploads/Neopronouns-Explained-UNCG-Intercultural-Engagement.pdf
- University of North Florida, LGBTQ Center,
  https://www.unf.edu/lgbtqcenter/Pronouns.aspx
- University of Wisconsin-Milwaukee, LGBTQ+ Resource Center,
  https://uwm.edu/lgbtrc/support/gender-pronouns/
- University of Northern Iowa, Gender & Sexuality Services,
  https://lgbt.uni.edu/pronouns
- University of Missouri, LGBTQ Resource Center,
  https://lgbtq.missouri.edu/resources/gender-pronouns/
- University of Southern California, LGBTQ+ Student Center,
  https://lgbtrc.usc.edu/trans/transgender/pronouns/

- University of Colorado Springs, LGBT Resource Center, https://lgbtresourcecenter.uccs.edu/pronouns-101
- University of Wisconsin-Madison, LGBT Campus Center, https://lgbt.wiscweb.wisc.edu/wp-content/uploads/sites/175/2016/07/LGBTCC-Gender-pronoun-guide.pdf

केही समुदायमा आधारित संगठनको मान्यताहरू

- The Need for a Gender-Neutral Pronoun, https://genderneutralpronoun.wordpress.com/
- Pronouns Matter, https://www.mypronouns.org/
- Transgender Training Institute, Inc, https://www.transgendertraininginstitute.com/pronouns/
- LGBT Rights Center, https://lgbtlifecenter.org/pronouns/

विविध

- Singular "They" - APA Style Guide https://apastyle.apa.org/style-grammar-guidelines/grammar/singular-they

- Non-binary barrister listed as 'Mx' by chambers in legal milestone https://www.legalcheek.com/2021/03/non-binary-barrister-listed-as-mx-by-chambers-in-legal-milestone/

- Australian Federation Press Style Guide for Use in Preparation of Book Manuscripts, page 4 (Gender Neutral Language) https://web.archive.org/web/20210325004720/https://federationpress.com.au/StyleGuidelinesforFederationPress.pdf

***